




प्रदेश सरकार
प्रदेश नं.५
उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय

# डिभिजन वन कार्यालय, पाल्पा

कार्यालय कोड नं. ३०७०२५००१५

## शिलबन्दी बोलपत्र आह्वानको सार्वजनिक सूचना

## सूचना नं. १/२०७७/०७८'

प्रथम पटक प्रकाशित मिति : २०७७/०५/२३

यस कार्यालयको मिति २०७७/४/३२ को निर्णयानुसार यस कार्यालयबाट बगनासकाली-८ स्थित महामृत्युन्जय शिवासन मन्दिर पर्यटकीय पूर्वाधार निर्माण कार्य गर्नु पर्ने भएकाले नेपाल सरकारबाट ईजाजत प्राप्त ईच्छुक फर्म वा कम्पनीहरुबाट देहाय बमोजिमको शर्तको अधिनमा रहि रितपूर्वकको सिलबन्धी बोलपत्र आह्वानको यो सुचना प्रकाशित गरिएको छ।

**शर्तहरु :**

१) वोलपत्र फाराम प्रथम पटक सुचना प्रकाशित मितिले १५ औं दिन सम्म कार्यालय समय भित्र चालु आ.व.को लागि नविकरण भएको फर्म दर्ता प्रमाण पत्र,स्थाई लेखा दर्ता प्रमाण पत्र,मु.अ.कर दर्ता प्रमाण पत्र एवं आ.व. २०७६/०७७ को कर चुक्ता प्रमाण पत्रको प्रमाणित प्रतिलिपी संलग्न राखी लिखित निबेदन पेश गरी रु १,०००।– अक्षरुपी एक हजार मात्र (फिर्ता नहुने) को रा.वा.वैंक पाल्पामा यस कार्यालयको नाममा (कार्यालय कोड नं. ३०७०२५००१५) राजश्व रकम बुझाई सो समेत संलग्न राखि वोलपत्र फाराम यस कार्यालय वा जिल्ला प्रशासन कार्यालय पाल्पाबाट खरिद गर्न सकिने छ।

२) खरिद गरिएको बोलपत्र फाराम प्रथमं पटक सूचना प्रकाशित भएको मितिले १६ औं दिनको १२:०० बजे भित्र यस कार्यालयको नाममा सम्बोधन गरी खामको बाहिर कामको विवरण ठेक्का नं.बोलपत्र फाराम पेश गर्नेको नाम,ठेगाना,र फोन नं. उल्लेख गरी सहिछाप गरी सिलबन्दी लाहा छाप लगाई यस कार्यालयको प्रशासन फाँट र जिल्ला प्रशासन कार्यालय पाल्पामा दर्ता गराई सक्नु पर्ने छ। सिलबन्दी बोलपत्र दर्ता गर्ने अन्तिम दिनको २:०० बजे बोलपत्र दाता वा निजले अख्तियारनामा दिई पठाएका प्रतिनिधिको रोहवरमा खोलिने छ। बोलपत्रदाता वा निजका प्रतिनिधि उपस्थित नभए पनि बोलपत्र खोल्न बाधा पर्ने छैन।

३) बोलपत्रदाताले खरिद कारबाहीमा भाग लिन अयोग्य नभएको,प्रस्तावित खरिद कारबाहिमा आफ्नो कुनै स्वार्थ नबाझिएको,सम्बन्धित पेशा वा व्यवसाय सम्बन्धी कसुरमा कुनै सजाय नपाएको भनि लिखित रुपमा घोषणा गरेको कागजात बोलपत्र फाराम साथ पेश गर्नुपर्ने छ।

४) सिलबन्दी बोलपत्र साथ तपशिलमा उल्लेख गरे वमोजिमको जमानत रकम कोष तथा लेखा नियन्त्रक कार्यालय पाल्पाको धरौटी खाता नं. ३०३०५०२००००००० मा रकम दाखिला गरेको सक्कलै बैंक भौचर वा यस कार्यालयको नाममा जारी गरिएको बोलपत्र दाखिला हुने अन्तिम दिनबाट गणना हुने गरी कम्तीमा ९० दिन अवधि (Validity) रहेको सक्कल बैंक जमानीपत्र संलग्न गरी पेश गर्नुपर्ने छ।

५) दररेट अंक र अक्षरमा लेख्नु पर्ने छ। अंक र अक्षरमा फरक पर्न गएमा अक्षरमा लेखिएकोलाई मान्यता दिईने छ।

६) म्याद नाघी आएको वा रित नपुगेको कुनै पनि शर्त राखी पेश गरेको सिलबन्दी बोलपत्र उपर कारबाही हुने छैन।

७) बोलपत्र सम्बन्धी सम्पूर्ण कुराहरु यसमा लेखिए वमोजिम र यसमा उल्लेख नभएको हकमा सार्वजनिक खरिद ऐन, २०६३, सार्वजनिक खरिद नियमावली, २०६४ (संसोधन सहित) तथा नेपाल सरकारको अन्य प्रचलित ऐन नियम वमोजिम हुनेछ।

८) बोलपत्र खरिद गर्ने तथा पेश गर्ने अन्तिम दिन सार्वजनिक विदा पर्न गएमा सो कार्यहरु क्रमश: कार्यलय खुलेको लगतै अर्को दिन तत् तत् समयमा हुने छ।

९) बोलपत्र स्विकृत गर्ने वा नगर्ने सम्पूर्ण अधिकार कार्यालयमा सुरक्षित रहने छ। बोलपत्र सम्बन्धि अन्य कुराहरु बुझ्नु परेमा कार्यालय समय भित्र कार्यालयमा आइ बुझ्न सकिने छ। वा यस कार्यालयको Website : dfopalpa.gov.np मा हेर्न सकिने छ।

**तपशिल:**

| सि. नं. | ठेक्का नं. | कामको विवरण | बोलपत्र दस्तुर (रु.मा) | लागत अनुमान (भ्याट र कन्टिजेन्सी बाहेक) रकम (रु.मा) | जमानत रकम(रु.मा) |
|---|---|---|---|---|---|
| १ | १/२०७७/०७८ | महामृत्युन्जय शिवासन मन्दिर पर्यटकीय पूर्वाधार निर्माण, बगनासकाली-८, पाल्पा | १०००।– | १२७३९८६।१७ | ६४०००।- |

डिभिजनल वन अधिकृत (प्रा.)
कार्यालय प्रमुख